# के गर्ने ?

"जरो र किलो नेपालमै भएको मौलिक रैथाने शक्ति" को स्थापना भएको साडे दुई महिना भएको छ र यसबीचमा हाम्रो सम्पर्क विस्तारको क्रम निकै अगाडि बढेको छ । कतिपय विभागले प्रारम्भिक कार्य सुरु समेत गरिसकेका छन् । "जरो र किलो नेपालमै भएको मौलिक रैथाने शक्ति" का सदस्यहरूले तत्कालै गर्न सकिने कार्य के के हुन् त ? आउनोस्, विचार विमर्श गरौँ :—

(क) हाम्रो अभियान अहिले प्रारम्भिक अवस्थामा भएकाले सर्वप्रथमतः यसका सदस्यहरूले आफ्नो वैचारिक, सैद्धान्तिक, दार्शनिक प्रशिक्षणलाई नै प्राथमिक महत्व दिनु पर्छ । प्रत्यक्ष बैठक, भेला वा अन्य कार्यक्रम समेत राखेर वा अनलाइन माध्यमबाट विभिन्न विषयवस्तुमा आपसी विचार विमर्श गर्न सकिन्छ । जस्तै :

— "जरो र किलो नेपालमै भएको मौलिक रैथाने शक्ति" मा जरो, किलो, मौलिक, रैथाने र शक्ति शब्दका विशिष्ट अर्थहरू के के हुन् ?

— हाम्रो लक्ष्य "वैज्ञानिक सत्ययुग" हो । यसको परिभाषा, व्याख्या, विश्लेषण कसरी गर्ने ?

— हाम्रा आधारशिला चतुष्टय (चारवटा मुख्य आधार) विज्ञान, प्रविधि, धर्म र सहृदयता हुन् । हाम्रा आधारशिला चतुष्टयका आधारमा कसरी नेपालको सर्वाङ्गीण विकास गर्न सकिन्छ भन्नेबारे सूत्र निम्नानुसार छ ः "विज्ञानको बुद्धि प्रविधिको प्रगति । धर्मको विवेक सहृदयताको सम्बन्ध ।। विकास न्याय स्वाधीनता समृद्धिमा नेपालको । सहृदयी तराइ मधेश पहाड र हिमालको ।।" उक्त सूत्रको व्याख्या, विश्लेषण कसरी गर्ने ?

— वैदिक सनातन धर्म (जसलाई हिन्दू संज्ञा पनि दिने गरिएको छ) का साथै बौद्ध, किरात, बोन, जैन आदि जस्ता धर्मबारेको हाम्रो ज्ञान वृद्धि गर्ने । साथै, आफ्ना आफ्ना संस्कारको यथासम्भव आचरण कसरी गर्न सकिएला ?

— धर्म, संस्कृति, परम्परा, संस्कार, शिक्षा, अर्थतन्त्र, राजनीति, विकासका अनेक विषयवस्तुहरू छन्, जसबारे हाम्रा मौलिक चिन्तन रहेका छन् र जसलाई हाम्रा सदस्यहरूले धारणा गर्नु आवश्यक हुन्छ । उदाहरणका लागि "आर्य" शब्दको अर्थ मात्र राम्ररी बुझ्न र बुझाउन सकियो भने हाल नेपाली–नेपालीको बीचमा जात–जाति–जनजाति–आदिवासीको निहुँमा हुने गरेको द्वेष हटाउन सकिन्छ र नेपाली एकताको आधार बलियो बनाउन मद्दत मिल्छ ।

— नेपालमा "जरो र किलो नेपालमै भएको मौलिक रैथाने शक्ति" को आवश्यकता किन परेको हो ? अनि "जरो र किलो नेपालमा भएको अन्तर्राष्ट्रिय शक्ति" जस्तो अन्तर्राष्ट्रिय संस्थाको आवश्यकता किन परेको हो ? यस्ता अभियानबाट नेपाललाई के फाइदा हुन्छ र नेपाली नागरिकलाई एवं नेपालबाट संसारभरिका विभिन्न देशमा पुगेका नेपालीजनका लागि यसको सार्थकता के छ ?

— हालसम्म जो जो "जरो र किलो नेपालमा भएको अन्तर्राष्ट्रिय शक्ति" का सदस्य बनिसकेका छौं, उनीहरूले व्यक्तिगत हैसियतमा र संस्थागत हैसियतमा नेपालको हितका लागि के कस्तो योगदान गर्न सक्ने अवस्था छ ? अनि यस अभियानका सदस्यता नलिएकाहरूलाई पनि नेपाल र नेपाली समुदायको हितका लागि कार्य गर्न हामीले कसरी उत्प्रेरित गर्न सक्छौँ ? यी केही उदाहरण हुन् । यस्ता धेरै विषयवस्तुबारे चिन्तन मनन गर्ने चरणबाट गतिविधि सुरु गर्न सकिन्छ ।

हरेक बैठक, भेला वा अन्य कार्यक्रममा उठेका जिज्ञासाहरूको सूची तयार पारियो भने तिनलाई सम्बोधन गर्ने गरी हामी पुस्तक, लेख, प्रवचन तयार पार्न सक्छौँ र जिज्ञासाको समाधान हुँदै जानेछ ।

(ख) अहिले हाम्रो पूर्ण समिति बनिसकेको अवस्था होइन, त्यसका लागि प्रारम्भ हो । तसर्थ, सम्पर्क विस्तारको कार्य पनि अहिलेको हाम्रो प्राथमिकता नै हो । हप्तामा कम्तीमा एकजना र सम्भव भए बढी व्यक्तिसम्म हाम्रो वैचारिक, सैद्धान्तिक, दार्शनिक चिन्तन पुर्याउने लक्ष्य राख्न सकिन्छ । साथै, नेपालमा "जरो र किलो नेपालमै भएको मौलिक रैथाने शक्ति" र अन्तर्राष्ट्रियस्तरमा "रुट एण्ड लोकस इन्टरनेसनल मुभ्मेन्ट" (जरो र किलो नेपालमा भएको अन्तर्राष्ट्रिय शक्ति) स्थापित भएको छ भन्ने जानकारी आफ्नो मित्रमण्डली, कुटुम्ब र अन्य व्यक्तिहरूसमक्ष समेत पुर्याउने कार्य पनि महत्वपूर्ण हो ।

(ग) सामाजिक सञ्जालमार्फत् हाम्रो वैचारिक, सैद्धान्तिक, दार्शनिक चिन्तनको प्रवाहमा योगदान गर्ने ।

(घ) जब हामीसँग जनबल, मनबल, धनबलको हिसाबले वास्तवमै केही शक्ति आर्जन हुनेछ, तब हामी वैचारिक, सैद्धान्तिक, दार्शनिक चिन्तनजस्ता कार्यमा मात्र सीमित नरहेर व्यावहारिक कार्य समेत सुरु गर्न सक्नेछौँ ।

उदाहरण :

— हाम्रा सदस्यहरूका साथै अन्यका लागि समेत उद्यम एवं रोजगारीका अवसर सिर्जना गर्न साना÷ठूला अनेक परियोजनाहरू सञ्चालन गर्न सकिन्छ ।

— वेददेखि क्वान्टम फिजिक्ससम्म, आयुर्वेददेखि अत्याधुनिक मेडिकल साइन्ससम्म, स्थापत्यवेददेखि अत्याधुनिक सिभिल इन्जिनियरिङसम्म, वैदिक गणितदेखि अत्याधुनिक डाटा प्रोसेसिङ–एनलाइसिससम्म, वैदिक कर्मकाण्डदेखि अत्याधुनिक इन्फर्मेसन टेक्नोलोजीसम्म एवं अन्य पनि यस्तै हिसाबले एउटै शैक्षिक प्रणाली अन्तर्गत पठनपाठन हुने "आधुनिक गुरुकुल" र अनुसन्धानका लागि हाम्रा मौकिल रैथाने अनुसन्धान केन्द्रहरु स्थापना गर्न सकिन्छ ।

— नेपालमा अति पिछडिएको कुनै एक गाउँलाई "धर्मसन्तान" का रूपमा लिएर (हिन्दीमा "गोद" लिने भनेजस्तै) त्यो गाउँलाई हरेक हिसाबले नमूना गाउँ (मोडल भिलेज) का रूपमा विकास गरी हामीले देशको विकास कसरी गर्ने हो भन्ने परीक्षण गर्न सकिन्छ र देशभरि त्यसलाई एक आदर्शका रूपमा प्रस्तुत गर्न पनि सकिन्छ ।

यहाँको टिप्पणी, सुझाव, सन्देश के छ ?